*कानून विवरणिका*
मध्यकालको एउटा फार्सेपत्र
ल्याः ६०, विसं २०५०, पृ. ३०-३४

# नेपालमा लिखतपत्रहरूको परम्परा

देविचन्द्र श्रेष्ठ*

हाम्रो यहाँ लिखतपत्रहरूको जुन परम्परा भेटिन्छ त्यसले नेपाली सभ्यताकै प्रवक्ता भएर बसेको छ । अहिलेसम्म यस्ता लिखतपत्रहरू नेपाल उपत्यकामा राजधानी बनाई पछिल्ला मध्यकालमा खडा भएका भक्तपुर, कान्तिपुर र ललितपुरका तीन राज्यहरूमा प्रचलित जनसाधारणको व्यवहारका लिखतपत्रहरू सबभन्दा धेरै पाइन्छन् । नेपाल उपत्यकाका राज्यहरूबाहेक अन्यत्र खडा भएका चौविसी - बाइसी राज्यहरूमा यस प्रकारका लिखतपत्रहरू जन साधारणको व्यवहारमा प्रचलित भएको प्रमाणित गर्ने आधार अहिलेसम्म देखापरेको छैन ।

नेपालको सुदूर पश्चिम कर्णाली प्रदेशमा खस राज्य स्थापना भएको बाह्रौं शताब्दीताका नै नेपालको विखण्डन शुरू भएको मान्नुपर्ने हुन्छ । तर, केन्द्रस्थल नेपाल उपत्यकामा विभाजन यक्ष मल्लको पालासम्म भएको थिएन । ने. सं. ६०२ मा यक्ष मल्लको मृत्यु भएपछि इतिहासले अर्कै कोल्टे फेरेको पाइन्छ । त्यसैले ने. सं. ६०० सम्मलाई पूर्व मध्यकाल मानेर अविभाजित नेपालको ऐतिहासिक परिकल्पना गरिएको छ । त्यस अवधिको पनि जनसाधारणको व्यवहारका लिखतपत्रहरू प्रशस्त भेटिएका छन् ।

नेपाल संवत् शुरूका लिखतहरूपत्रहरू हालसम्म देखानपरेतापनि ने. सं. दोस्रो शताब्दीदेखिका यस्ता लिखतपत्रहरू देखिनाले यसको परम्परा लिच्छवि कालदेखि नै हस्तान्तरित भएर आएको कुरामा इतिहास विश्वास गर्छ । तर, प्रष्ट रूपमा लिच्छिविकालकै लिखतपत्र भने ढुंगा वाहेक तात्कालिक सबै पदार्थ नष्ट भंए् सरह लिखतपत्रहरू पनि कालको गर्तमा परिसकेको कुरा यहाँनिर मान्नै पर्नेछ ।

यसरी, नेपाली सभ्यताकै अस्तित्व स्वरूप जीवित हाम्रा पुराना लिखतपत्रहरूको अध्ययन हाम्रो यहाँ अहिलेसम्म भएको पाइदैन । ती लिखतपत्रहरूले जनसाधारणको कारोवारदेखि लिएर राजकीय कारोबारसम्मको क्षेत्र ओगटेका छन् तापनि कानूनी दृष्टिमा जनसाधारणको लिखतपत्रलाई नै बढ्ता जोड दिनुपर्ने हुन्छ । त्यसैले पुराना लिखतपत्रहरू हाम्रा कानूनी लिखत पनि हुनाले यस निवन्धमा जनजीवनसंग चासो रहने लिखतपत्रका सम्बन्धमा अध्ययनको निमित्त केही मार्ग दर्शन गर्न खोजिएको छ ।

लिखतपत्रहरूमा सबैभन्दा बढी अचल संपत्तिको विक्रीनामा नै पाइन्छन् । अब विक्रीनामा जग्गाको, घरको र घरजग्गाको समेत गरी तीन किसिममा छुट्याउन सकिन्छ । तिनीहरूमा पनि जग्गाको विक्रीनामाकै बाहुल्य देखापर्छन् जसलाई अचेलको परिभाषामा फार्सेपत्र भनिन्छ । अतः यहाँ मध्यकालमा जग्गा विक्रीनामाको सामान्य चर्चा गरिएको छ । यसको लागि कान्तिपुरको अन्तिम राजा जयप्रकाश मल्लका पालाको एउटा लिखतपत्र उदाहरणस्वरूप तल प्रस्तुत गरिन्छ :

* अधिवक्ता, सर्वोच्च अदालत, काठमाडौं ।



रवि शाक्य, इखाछैं, यल

श्रेयोऽस्तु ॥ सम्वत् ८७८ मार्ग्गशिर मासे शुक्लपक्षे प्रतिपद्यांतिथौं ॥ श्रीमत्कान्तिपुलि महानगरे - ॥ श्रीयम्बू ब्रूमायां ॥ गागुरज्ञ ॥ यवुओको दो तोर दुछे ननि यौताछे धनलक्ष्मी मयिकस्य नाम्नान सकासात् ॥ देओदे तोर क्वाथछे ननि यिता छे महजनि जयलक्ष्मी मयिकस्य नाम्नेन शुक्रीयं सुभुर्ज्यमानिकं । ग्वजिओख्वात ओर नाम संज्ञक ॥ ग्यान देओया वुन : पश्चिमतः ॥ गुथिया बुन : उत्तरत : वावुसिङ या वुन ॥ पूर्वत : पाद्ओया वुनः दक्षिणतः एतखामधे ध्वते चात्राधातन दु (ग्व) जिओख्वात ओ कर्ष १ तत क्षेत्रस्य जथा देशकार प्रवत्तमान संचाराधेन सुवर्ण मूलेमादाय स्वादिनानवत्तुक न्यायन । क्री विक्रीएतम् भवति ॥ तत्राधारनस्य निमिति जदि संकृत व्यावाड पीडा स्यात्तदा धारनके परिसोधयञ्च । अष्ट पत्रार्थे दृष्ट साक्षिष्ट स्वपुत्र अमित्र सिङ ॥ जयधन ॥ थाक अन्तरधिज ॥ प्रति राजदंद पूरेयात हेड्डा ॥ तपतिस कसधार मू टंका २५ शुभ ॥

(स्रोतः राष्ट्रिय अभिलेखालय)

## १. लिखतको मिति

लिखतपत्रमा उठानमै कारोवार भएको मिति लेख्ने प्रचलन सामान्य जस्तै देखिन्छ । यसमा साल, महिना, पक्ष र तिथिसम्म दिइन्छ । वार लेख्ने गरेको विरलै पाइन्छ । प्रस्तुत लिखतपत्रमा यसै प्रचलन अनुसार मिति दिइएको छ :

श्रेयोऽस्तु ॥ सम्वत् ८७८ मार्ग्गशिर मासे शुल्कपक्षे प्रतिपद्यां तिथौं ।

यसमा दिएको सम्वत् 'नेपाल संवत्' हो । नेपाल संवत्मा सामान्यतया ९३७ वर्ष जोड्दा विक्रम संवत् हुन्छ । तर, नेपाल संवत् कार्तिक शुल्क प्रतिपदादेखि प्रारम्भ हुने र वि. सं. चैत्र शुल्क प्रतिपदादेखि प्रारम्भ हुने भएकोले त्यस बीचको अवधि भएमा नेपाल सम्वत्मा ९३६ मात्र जोडेर वि सं. हुन्छ । यसरी गणना गर्दा प्रस्तुत लिखतको ने. सं. ८७८ मा ९३६ जोड्दा वि. सं. १८१४ हुन्छ । अतः यस लिखतको मिति आजकालको हाम्रो मितिपात्रो अनुसार वि. सं. १८१४ साल मार्ग शुक्ल पतिपदा हो ।

## २. ग्राहक

पुरानो लिखतपत्रमा मिति पछि ग्राहकको परिचय अर्थात् नाम ठेगाना दिने गरिन्छ । 'ग्राहक' भन्ने शब्द अक्सर राखिंदैन। तर कुनै कुनै लिखतपत्रमा ग्राहक फलानो भनेर इंगित गरिएको पनि पाइन्छ । 'ग्राहक' भन्ने शब्दले इंगित नगरेतापनि यसलाई बुझाउने अर्को पारिभाषिक शब्द छ 'सकाशात्' । यसको अर्थ हुन्छ : समक्षबाट । तर्फबाट । कुनै पनि विक्रीनामा लिखतको कारणी नै क्रेता हुने भएकोले त्यसलाई जनाउने 'ग्राहक' को नाम ठेगानामा लिखतको आरम्भमा रहनु स्वाभाविक छ । तर, यसको अपवाद पनि नपाइने होइन ।

अब, उपर्युक्त लिखतपत्रमा ग्राहकको परिचय गरौं :

श्रीमत्कान्तिपुलि महानगरे ॥ श्रीयंवू ब्रूमायां ॥ गागुरज्ञ ॥ यवुओको दो तोर दुछेननी यौता छे धनलक्ष्मी मयिकस्य नाम्नान सकासात् ॥

यसमा ग्राहकको नाम हो - धनलक्ष्मी मयी भन्ने स्वास्निमानिस । उनको ठेगाना लिखतपत्रमा जसरी दिइएको छ त्यसले तात्कालिक कान्तिपुर नगरको भौगोलिक अवस्थिति देखाउँछ । त्यतिखेर कान्तिपुरलाई उत्तरी भेक 'यम्वू' र दक्षिण भेक 'यंगल' भन्ने दुइटा स्पष्ट बिभाजन गरिएको छ । तामाङहरू अझै पनि काठमाडौंलाई 'यम्वु' भन्दैछन् । यंवूभित्र पनि गाँगुल पत्तनले राजकुल हनुमान् ढोकाको परिसरलाई बुझाउने

गरिएको पाइन्छ । त्यसपछि मात्र टोलको नाम दिइन्छ । यस लिखतमा दिइएको टोल हो यंवुओको दो । यसलाई अचेलको कुन टोलसित परिचय गराउने हो त्यो अध्ययन गर्न बाँकी नै छ । टोल भित्र पनि 'ननी' (चोक)हरू अनेक हुन्छन् । प्रस्तुत लिखतमा 'दुछे ननी'' भनेर दिइएको छ । त्यसमा पनि पूर्व - पश्चिम उत्तर-दक्षिण कतातिर फर्केको घरको पंक्तिमा पर्छ त्यसको उल्लेख गरिन्छ । प्रस्तुत लिखतमा 'यौताछें' भनेर पूर्वाभिमुख घरको पंक्तिलाई बुझाइएको छ ।

३. धारणक

विक्रीनामाको लिखतमा अर्को महत्वपूर्ण पक्ष्य हो विक्रेता । यसलाई अर्को शब्दमा 'ऋणी' भन्न सकिन्छ । जुन अचल सम्पत्ति विक्री गरिएको छ त्यसमा कानूनन् हक प्राप्त व्यक्तिलाई 'धारणक' भनेर लिखतपत्रमा उल्लेख गरिन्छ । यसरी हक अधिकार प्राप्त मात्र होइन हकभोग समेत गरिराखेको व्यक्तिले विक्री गरेको भन्ने अर्थ दिने गरी 'धारणक' को निमित्त प्रयोग हुने वाक्यांश हुन् : स्च क्रीयं स्वभुज्यमानकम् (आफैले किनेर भोग चलन गरेर राखेको संम्पत्ति) । धारणकको पनि ग्राहकको जस्तै नाम र ठेगाना प्रष्ट गरी लिखतपत्रमा खुलाइन्छ ।

प्रस्तुत लिखतपत्रमा कान्तिपुर महानगरको यम्बू खण्डमा गांगुल पट्टि चाहिं धारणकको ठेगानाको निमित्त पनि उत्तिकै लागू हुन्छ । अब, गागुल पत्तनमा खास ठेगाना दिंदा देओदे टोल अन्तरगत क्वाथछें ननी बस्ने जयलक्ष्मी मयीले यो विक्रीनामा गरिदिएको देखिन्छ । यहाँ पनि देओदे टोलको परिचय गर्नुपर्ने छ । यसको इलाका भित्र तत्कालीन शहरको एउटा किल्ला पर्दो रहेछ । त्यसैले, क्वाथछे भन्नाले नगरको शैलीलाई बुझाउछ । शहरको सुरक्षा गर्ने एउटा किल्लाकै परिसरको ''ननी'' मा धारणकको घरवास छ भनेर यसले व्यक्त गर्दछ । यिता छें भन्ने शब्दले पश्चिम पट्टि फर्केको घर संझनु पर्नेछ ।

४. विक्री वस्तु वा संपत्ति

लिखतपत्रमा तेस्रो स्थान विक्रीवस्तु वा सम्पत्तिको विवरणले लिन्छ । यसको लागि जग्गा भए जग्गाको प्रचलित नाम र त्यसको अवस्थिति बुझाउन चार किल्ला खोलेर दिने गरेको पाइन्छ । सार्थ, जग्गाको नापो पनि दिइन्छ ।

उपर्युक्त लिखतपत्रमा जग्गाको नाम ''ग्वजिओख्वात' भनेर दिइएको छ । चार किल्ला भने यसरी खुलाइएको छ :

ग्यान देओया बुन पश्मितः
गुथिया बुन उत्तरतः
बाबुसिङआ बुन पूर्वतः
फाटुओया बुन दक्षिणतः
एतेखा मधे ध्वते चात्राघातन दु ।

[अर्थ :

ज्ञानदेवको खेतदेखि पश्चिम, गूठीको खेतदेखि उत्तर बाबुसिंहको खेतदेखि पूर्व पादूयो खेतदेखि दक्षिण, यति चार किल्ला भित्रको जगाः गोजिओख्वाट]

घरजग्गा विक्री गर्दा चार किल्ला खुलाउनु पर्ने बाध्यात्मक व्यवस्था नेपालमा उहिल्यैदेखि पाइन्छ । यही प्राचीन पद्धतिको उत्तराधिकार अहिलेसम्म हस्तान्तरित भएर आएको छँदैछ ।

यसरी चार किल्ला खुलाइसके पछि सो सम्पत्तिको परिमाण दिइन्छ । यसको लागि त्यतिखेर नै खेतको हकमा रोपनी को प्रचलन पाइन्छ । रोपनीको

परिभाषा गर्दा चार कर्षको एक रोपनी हुन्छ । उपर्युक्त लिखतमा एक रोपनीको चौथाइ एक कर्ष खेत वेचिएको छ जसको मूल्य २५ रूपैया तोकिएको छ ।

## ५. सम्पत्तिको मूल्य

विक्री वस्तुको परिचम र परिमाण पछि लिखतपत्रमा पालो आउँदछ त्यस सम्पत्ति मूल्यांकनको व्यहोरा । यसको लागि 'यथा देशकाल प्रवर्तमान संचारार्धेण स्वर्ण मूल्यमादाय' भन्ने वाक्पद्धति प्रचलित छ । यसले तत्काल चलन चल्तीको मूल्य लिएर विक्री गरिएको भन्ने अर्थ बुझ्ाउछ । तर, लिखतको अन्त्यमा मूल्य रकम खुलाएर दिने पनि चलन छ ।

उपर्युक्त लिखतपत्रमा खेत विक्री गरिएको हो । त्यसैले यहां 'तत क्षेत्रस्य जथादेशकार प्रवतमान संचाराधेन सुवर्णमूले मादाय' भन्ने व्यहोरा परेको छ तापनि 'मू टंका २५' भनेर अन्तमा लेखिएको छ ।

## ६. कारोवारको कानूनी पक्ष

विक्रीनामा गर्दा 'स्वाधीनवत्तुक न्यायेन क्रय विक्रीयतं भवति' भन्ने वाक्यांशले ग्राहकको हकमा खरीद र धारणकको हकमा विक्रीको कुरा प्रमाणित गर्छन् । यसका साथसाथै, विक्रीवस्तुमा हक बेहकको खिचोला उठ्यो भने त्यसको भार धारणक अर्थात ऋणी माथि नै पर्ने हुन्छ । त्यसको लागि यस्तो व्यहोरा लिखतमा उल्लेख गरिनेछ :

तत्र धारणकस्य निमित्तेन यदि संकट विवाद पीडा स्यात्तदा धारणकेन परिशोधनीयञ्च ।

[ऋणीको हकमा सम्पत्ति उपर कुनै झैझगडा उठ्यो भने त्यसको निराकरण ऋणीले नै गरिदिनु पर्छ। अर्थात् विक्री गरेको जग्गा नकरा ठहरिएमा साहूको थैली भरिदिने दायित्व ऋणी कै हुन्छ ।]

उपर्युक्त लिखतमा यही व्यहोराको प्रस्तुतीकरण अशुद्धरूपमा भएको छ :

स्वादिनान वत्तुक न्यायन । क्री विक्रीएतम् भर्वात । तत्रा धारनस्य निमित्ति जदि संकृत व्यावाद पीडा स्यात्तदा धारनके परिसोधयञ्च ।

## ७. लिखतमा साक्षी र लेखक

प्रत्येक लिखतमा साक्षी राख्ने प्रचलन पनि उत्तिकै पुरानो हो । साथै, लिखत मसौदा गरिदिने व्यक्तिको उल्लेख पनि हुन्छ । साक्षीमा विशेषण 'दृष्ट' (देख्ने) लागेको हुन्छ । यसमा श्रेणीको नातेदार अथवा प्रशासकीय पदाधिकारीहरू साक्षीराख्ने चलन पाइन्छ । उपर्युक्त लिखतमा साक्षी ऋणीकै छोराहरू वसेका छन् :

अष्ट पत्रार्थे दृष्ट साक्षीष्ट स्वपुत्र अमित्र सिंह ॥ जय धन ॥

यो वाक्य पनि अशुद्ध गरी लेखिएकाछन् । यसको शुद्ध रूप हो : अत्र पत्रार्थे दृष्ट साक्षी स्वपुत्र अृमत सिंह । जयधन । लिखतपत्रको लेखकलाई बुझाउन 'थाक' भन्ने नेपाल भाषाको प्रयोग गरिन्छ । यसमा लेखकको ना हो अन्तरधीज । उस वखत यस्ता लिखतहरू तैयार गरिदिने एउटा पेशेवार वर्गनै पाइन्छ जसलाई 'कायस्थ' भनिन्छ । तर, ज्योतिषीहरूले पनि यो काम गर्छन् ।

## ८. वापत

लिखतपत्रमा कारोवारको वापत खुलाउने चलन पनि पुरानै हो । यसको निम्ति 'प्रति' भन्ने शब्दले

व्यक्त गराइन्छ । प्रस्तुत लिखतमा 'प्रति राजदंद पुरेयात हेह्म' भन्ने नेपाल भाषाको वाक्यले ऋणीलाई लागेको राजकीय दण्ड रू. २५ तिर्नलाई एक चौथाइ रोपनी जग्गा नै विक्री गरिएको रहेछ ।

## ९. तलस्वामि र तलपतिको व्यवस्था

मध्यकालमा जग्गाको प्रशासकीय कार्य र स्रेस्ताको जिम्मा तलस्वामिसंग हुन्छ । त्यसैको अपभ्रंश हो 'तलसिङ' भन्ने शब्द । जग्गाको हकमा 'तलपतिसह' भन्ने शब्द लिखतहरूमा अक्सर आउँछ । यसले जग्गाको पुर्जा प्रमाणित गरिदिएको अर्थ व्यक्त गर्छ । प्रस्तुत लिखतमा 'तलपतिस' भनेर यसै तथ्यलाई जनाएको कुरा बुझिन्छ ।

## १०. राजकीय मुद्रा

प्रत्येक लिखतपत्र राजकीय मुद्राले प्रमाणित गरिदिएको हुन्छ । यसको लागि माटाको छाप लगाउने चलन थियो मध्यकालमा । यो माटाको छाप कसले के कति रीत पुऱ्याई लगाइदिने गर्थ्यो त्यसको पनि निर्क्यौल हुन वाँकी नै छ । त्यतिखेर जग्गाको पुर्जालाई 'तलपति' (देशज भाषा) भन्ने गरिएकोले 'तलस्वामि' ले नै यस्तो मुद्राअंकित गरिदिन्थ्यो कि भन्ने एउटा अनुमान छ ।

प्रस्तुत लिखतमा माटाको छापको बीचमा "त्रिशूल" चिन्ह छ । त्यसको तलतिर 'सिंह' अंकित गरिएको छ । छापको घेराभित्र 'श्री ३ वाहिनि' भन्ने अक्षर देखिन्छ । त्रिशूलको माथि चन्द्र-सूर्य अंकित गरिएका छन् ।

## उपसंहार

काठमाडौं उपत्यकामा पृथ्वीनारायण शाहले प्रवेश गरेपछि लिखतपत्रको यस प्राचीन पद्धतिको पनि अन्त्य भएको छ । लिखतपत्रको संस्थागत व्यवस्था कसरी हट्यो त्यसको छुट्टै अध्ययन गर्नुपर्ने छ । संस्कृत भाषाको विकृत प्रयोग गरिएतापनि त्यसले प्राचीन लिखतपत्रहरूकै प्रतिनिधित्व गरिराखेको थियो । जहाँसम्म संस्कृत भाषाको विकृत प्रयोगको कुरा छ त्यसबाट उतिखेर संस्कृतमा पठन पाठन ह्रास आएको वस्तुस्थिति व्यक्त गर्छ । खास गरी कायस्थ र दैवज्ञहरूले लिखतपत्र तैयार गर्ने हुँदा तिनीहरूको शैक्षिकस्तर गिर्दो अवस्थाको चित्रण हुन्छ नै । तर, देशज भाषाको रूपमा नेपाल भाषाले पनि लिखतपत्रमा बीच बीचमा ठाउँ पाइरहेकोले गर्दा त्यसको ऐतिहासिकता भने छँदै छ ।

तर, पृथ्वी नारायण शाहको प्रवेशपछि नेपालको लिखतपत्रमा लेखिने व्यहोरामा संस्कृत लेखन पद्धतिको बदला देश भाषाको रूपमा खस भाषाले मात्र स्थान पाउन थाले । तथापि, प्राचीन लिखतपत्रको प्रभावबाट सर्वथा मुक्त भएको भने मान्न सकिंदैन ।

